**गोरखा :** गोरखा नगरपालिका—५ को हाल चिल्ड्रेनपार्क भनेर चिनिने डाँडाको पुरानो नाम मणि मुकुन्दसेन कोट हो। नयाँ पुस्ताले पाँच सय वर्ष पुरानो इतिहासको सुनौलो महिमा मेटेर चिल्ड्रेनपार्क नामकरण गरिएको छ। चिल्ड्रेनपार्कको नाम पनि परिमार्जन गरी आजभोलि 'सीपी' नामकरण गरिएको छ। यो मुकुन्दसेन कोटको इतिहास खोज्दै जाँदा विक्रम संवत् १५७५ देखि १६१० सम्म पुग्न सकिन्छ। जतिबेला पाल्पाका चक्रवर्ती राजा मणिमुकुन्द सेनले यहाँसम्म राज्य सञ्चालन गरेका थिए।

द्रव्य शाहले विक्रम संवत् १६१६ मा गोरखा राज्य स्थापना गर्नुअघि यहाँ राजा मुकुन्द सेन (प्रथम)को राज्य थियो। यहाँ अहिले पनि त्यतिबेला मुकुन्द सेनको दरबार र उनले निर्माण गरेको खड्गदेवी मन्दिर छ। यसलाई पुरातŒव विभागले जीर्णोद्धार गरिराखेको छ।

त्यतिबेला पाल्पाका राजा मुकुन्द सेन (प्रथम) राज्य एकीकरण अभियानमा थिए। उनले पूर्वमा गंगा र ब्रह्मपुत्रको संगमस्थल, पश्चिममा कुमाउँ, गडवाल र श्रीनगरसम्म राज्य विस्तार गरेका थिए भने उत्तरमा धौलागिरि हिमाल र दक्षिणमा हरिहर क्षेत्रसम्म अजेय राज्य सञ्चालन गरेका थिए।

उनले शिववाणी सुनेका थिए र उनलाई भगवान् शिवले खड्ग उपहार दिएका थिए भन्ने गरिन्छ। सोही खड्गलाई पूजा गर्न उनले यहाँ खड्गदेवी मन्दिर निर्माण गरेका थिए भन्ने इतिहास छ। उनको दरबारभन्दा केही तल उनले धारा निर्माण गरेको थिए, जसलाई मिरकोटे धारा भनिन्छ।

राजा मुकुन्द सेन दुई जना थिए। मुकुन्द सेन प्रथम जीवनको उत्तरार्धमा बन्दीपुर हुँदै देवघाटमा गएर मुनि बनेर तपस्यामा लीन बने र सशरीर परमात्मामा विलीन भए। मुनि मुकुन्द सेन भन्दाभन्दै पछि उनी मणि मुकुन्द सेन नामले कहलाए।

गोरखाका राजा पृथ्वीनारायण शाहसँग पाल्पाली सेन राजाको नाता साइनो पनि थियो। पाल्पाली राजा गन्धर्व सेनकी छोरी कौशल्यावतीलाई गोरखाका राजा नरभूपाल शाहले विवाह गरे। जसको कोखबाट आधुनिक नेपालका निर्माता बडामहाराजाधिराज पृथ्वीनारायण शाहको जन्म भएको थियो।

यिनै मणि मुकुन्द सेन (प्रथम)ले केही समय राज्य चलाएको डाँडा भएकाले यसलाई मुकुन्दसेनकोट भनेर चिनिएको इतिहासविद् दिनेशराज पन्तले जानकारी दिए। पन्तका अनुसार १५७५ देखि १६१० सम्म उनको शासनकाल रहेको छ।

गोरखा सदरमुकामको सबैभन्दा प्राचीन धरोहरका रूपमा रहेको भए पनि प्रचारप्रसारको अभावमा यसको महŒव ओझेलमा परेको छ।

गोरखा नगरपालिका–५ स्थित मणि मुकुन्दसेनकोट।  तस्बिर : शिव उप्रेती।

## प्रतिक्रिया दिनुहोस !



जेसिबीले पल्टाएको ढुंगाले लाग्दा गुल्मीमा आठ वर्षीय बालिकाको...



कार्यालयभित्रै मृत भेटिए नेपाल प्रहरीका सइ



कुरूप बन्दै कमलदह



पोखरा भ्रमण वर्ष २०२५ सुरु : २० लाख पर्यटक भित्र्याउने लक्ष्य

## लोकप्रिय



१ अर्थमन्त्री पौडेललाई ४८ घण्टासम्म आइसीयुमै राखेर उपचार गरिने

२ केबलकारको पक्षमा बोलेको भन्दै कालोमोसो दलेर कुटपिट

३ पेट्रोलको मूल्य वृद्धि, डिजेल र मट्टितेलको ४ रुपैयाँले घट्यो

४ एलन मस्क बच्चा लिएरै किन पुग्छन् ठूला बैठकहरूमा?

५ संसदमा राजासहितको प्रजातन्त्रको माग, धर्म सापेक्ष राष्ट्र घोषणा नगरे आन्दोलन...

६ नयाँ दिल्लीको रेलवे स्टेशनमा भागदौड : १८ जनाको मृत्यु, २५ घाइते

७ सांसद ज्ञानेन्द्र शाहीले राष्ट्रिय सभालाई गरेको टिप्पणीप्रति आपत्ति, खेद प्रस्ताव...

८ पोखरामा बेलुन विष्फोट घटना : विज्ञसहितको छानबिन समिति गठन

९ ट्रम्प र मस्कविरुद्ध १४ अमेरिकी राज्यद्वारा मुद्दा दायर

## WORKING TOGETHER IS NO LONGER OPTIONAL-IT IS A MATTER OF COMPULSION

Annapurna Media Network has announced the Unity for Sustainability campaign which comes into force from January 1, 2022. The main aim of this campaign is to 'lead the climate change dialogue' working closely with all the stakeholders on sustainable development mode, particulary focusing on climate-change issues.

Unity for Sustainability




अन्नपूर्ण



THE ANNAPURNA express







---

## हाम्रो बारे

ANNAPURNA MEDIA NETWORK is a leading media conglomerate that believes in social and economic development through responsible media practice. Prosperous Nepal is always at the core of AMN. We champion democratic values, economic development, national sovereignty,

